सन्दर्भः २८ औं अन्तर्राष्ट्रिय अपाङ्गता दिवस

# अपाङ्गता भएका पाँच साहित्यकार

**आभास धरानन्द राजोपाध्याय** मंसिर १७, २०७६ | मंगलबार | काठमाडौं








मङ्गलबार अन्तर्राष्ट्रिय फरक क्षमता भएका व्यक्तिको दिवस मनाइँदै छ। यसलाई अपाङ्गता दिवस भन्ने वा नभन्नेबारे विभिन्न मत होलान्, तर अपाङ्गताले क्षमतामा फरक नपार्ने उदाहरण प्रशस्तै छन्।

यो दिवस मनाउँदै गर्दा विश्व साहित्यबाट अपाङ्गता भएका केही प्रसिद्ध लेखकहरूका बारेमा प्रस्तुत छ-

### १) हेलन केलर (सन् १८८०–१९६८), अमेरिकी लेखिका तथा राजनीतिकर्मी

हेलन एडम्स केलरलाई विश्वभर एक प्रसिद्ध प्रेरक व्यक्तित्व मानिन्छ। बहिरी र अन्धी भएर पनि कलामा स्नातक उपाधि पाउने उनी पहिलो व्यक्ति थिइन्। मात्र १९ महिनाको हुँदा उनको आँखाको ज्योति गुम्यो र कानले सुन्न छोड्यो।

तर पछि उनले एन सुल्लिभनसँग ४९ वर्ष साथ रही कुराकानी गर्न र पढ्न सिकिन्। सन् १९०३ मा प्रकाशित उनको आत्मवृत्तान्त ‘द स्टोरी अफ माइ लाइफ’ले उनका सङ्घर्षको बयान गर्छ।

अमेरिकी समाजवादी पार्टी तथा विश्व औद्योगिक मजदुरका सदस्यका रूपमा उनले महिलाको मतदान अधिकार, श्रम अधिकार, समाजवाद, गैरसैन्यीकरणलगायतका विषयमा अभियानमा पनि संलग्न भएकी थिइन्।

**२) क्रिस्टी ब्राउन (सन् १९३२–१९८१), आयरल्यान्डका लेखक तथा चित्रकार**

क्रिस्टी ब्राउन मष्तिस्क पक्षघातबाट पीडित थिए र उनी आफ्नो बायाँ खुट्टाको औंलाले मात्र लेख्न वा टाइप गर्न सक्थे।

विभिन्न कृतिमध्ये सन् १९५४ मा प्रकाशित उनको आत्मवृत्तान्त ‘माई लेफ्ट फुट’ सर्वाधिक लोकप्रिय मानिन्छ। उनको सफलताको कथाले अपाङ्गताप्रति समाजको दृष्टिकोणबाट माथि उठ्न सकिन्छ भन्ने देखाउँछ।

उनको जन्म हुँदा डाक्टरहरूले उनलाई केयर सेन्टरमा राख्न सल्लाह दिएका थिए, तर उनका आमाबुबाले भने यो सल्लाह मानेका थिएनन्।

**३) फ्योडर डस्टयभ्स्की (सन् १८२१–१८८१), रुसी साहित्यकार र दार्शनिक**

फ्योडर मिखाइलभिच डस्टयभ्स्कीले सन् १८६६ मा करिब ७०० पृष्ठको ‘क्राइम एन्ड पनिस्मेन्ट’ उपन्यास लेखे। यस क्रममा उनी मिर्गीबाट पीडित थिए, त्यो पनि झन्डै १०२ पटक। उनको यही अनुभवले उपन्यासका केही पात्रहरू जन्मिए।

मस्तिष्कमा असर पार्ने यो रोगलाई पनि अपाङ्गताका रूपमा मानिन्छ। रुसी साहित्यको स्वर्ण युगका सबैभन्दा चर्चित लेखक डस्टयभ्स्कीका साहित्यमा धार्मिक, मनोवैज्ञानिक र दार्शनिक चिन्तन पाइन्छ।

## ४) जोन मिल्टन (सन् १६०८–१६७४), अङ्ग्रेजी कवि र विचारक

बेलायती कवि जोन मिल्टनको सन् १६६७ मा प्रकाशित 'प्याराडाइस लस्ट' उनको प्रसिद्ध महाकाव्य हो। उनले यो कृति आँखाको ज्योति गुमाएको २० वर्षपछि लेखेका थिए।

झन्डै सन् १६५१ मा उनले आँखाको ज्योति गुमाए। त्यो बेला ब्रेललगायत कुनै प्रविधिको विकास भएको थिएन, उनको छोरीहरूले पढेर सुनाउँथिन् र उनले वाचन गर्थे।

आफ्नो आँखाको ज्योति गुमेको अनुभव उनको सन् १६५२ को कविता 'अन हिज ब्लाइन्डनेस'मा मिल्टनले लेखेका छन्।

## ५) सूरदास (करिब सन् १४७८–१५६१), भारतीय भक्ति कवि र गायक

भारतीय उपमहाद्वीपमा फैलिएको भक्ति आन्दोलनमा सहभागी थिए, सूरदास। हिन्दीको एउटा भाषिका मानिने वृज भाषामा उनले भगवान् श्रीकृष्णको भक्ति गरी गीतहरू लेखेका छन्।

उनी जन्मैदेखि अन्धो थिए, त्यसैले परिवारले उनको ख्याल गरेन। छ वर्षकै उमेरमा घर छोडेर उनी यमुना नदी किनारमा बस्न गए।

वृन्दावन जाँदै गरेका तीर्थालुबीच उनले वल्लभ आचार्यलाई भेट्ने मौका पाए र अन्ततः उनकै शिष्य भए। आचार्यका अष्टछापमध्ये सबैभन्दा प्रमुख उनलाई मानिन्छ।

सूरसागर र साहित्य लहरी जस्ता ग्रन्थाकार कवितामा सूरदासले महाभारत तथा रामायणका र अझ विशेषतः कृष्णलीलाका वर्णन गरेका छन्।

प्रकाशित: Dec 03, 2019 | 15:28:36

---

**आभास धरानन्द राजोपाध्याय**

---